# आवश्यक पदार्थ नियन्त्रण (अधिकार) ऐन, २०१७

लालमोहर र प्रकाशत मिति

२०१७।११।६

संशोधन गर्ने ऐन

| | | |
|---|---|---|
| १. | नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ | २०१९।१२।३० |
| २. | आवश्यक पदार्थ नियन्त्रण (अधिकार) (पहिलो संशोधन) ऐन, २०३० | २०३०।१२।११ |
| ३. | न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ |

२०१७ सालको ऐन नं. २८

## आवश्यक पदार्थ नियन्त्रण अधिकारको व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : ♣सर्वसाधारण जनताको सुविधा कायम राख्न समाजको दैनिक चलन, व्यवहार र आहारको लागि चाहिने खाद्यान्न, माल सामानको वितरण, बिक्री र व्यापारमा समय समयमा आवश्यकतानुसार कडा नियन्त्रण गर्ने अधिकारको व्यवस्था गर्नु वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराजबाट ♣नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेको छ ।

१. **संक्षिप्त नाम, विस्तार तथा प्रारम्भ** : (१) यस ऐनको नाम "आवश्यक पदार्थ नियन्त्रण (अधिकार) ऐन, २०१७" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

#२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा-

(क) "आवश्यक पदार्थ" भन्नाले देहायको कुनै पदार्थ सम्झनुपर्छ :-

(१) धान र चामल, मकै, गहुँ, कोदो, जौ र तिनको पीठो, मैदा र त्यस्तै किसिमका अरु खाद्यान्न,

(२) रहर, मुगी, मास, मुसुरो, चना, केराउ, भटमास र तिनको पीठो र त्यस्तै किसिमका अरु खाद्यान्न,

♣ नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित ।

# पहिलो संशोधनद्वारा संशोधित ।

(३) आलस, तोरी, सर्स्यू, तिल र तेल निकाल्नको निमित्त प्रयोग हुने त्यस्तै अन्य तेलहन र सबै किसिमका तेल,

(४) दूध र दूधबाट तयार हुने खाद्य पदार्थ,

(५) उखू र त्यसबाट पैदा हुने गुंड, सखर चिनी र अन्य त्यस्तै पदार्थ,

(६) सूती वा ऊनी लत्ता कपडा, कपास तथा ऊन,

(७) कच्चा जूट र त्यसबाट तयार भएका वस्तुहरु,

(८) मट्टितेल, पेट्रोल, डिजेल र सबै प्रकार लुब्रिकैण्ट,

(९) फलाम र फलामबाट तयार भएका वस्तुहरु,

(१०) सिमेण्ट, ईंट, जस्तापाता आदि निर्माणको निमित्त आवश्यक पर्ने वस्तुहरु,

(११) सवारीको साधनहरु र त्यस्ता साधनहरुको निमित्त आवश्यक टायर, टयूब, पार्ट पुर्जाहरु,

(१२) नून,

(१३) औषधी,

(१४) नेपाल सरकारले समय समयमा सूचित आदेशद्वारा आवश्यक पदार्थ भनी तोकेको कुनै पदार्थ वा वस्तु ।

(ख) "सूचित आदेश" भन्नाले नेपाल राजपत्रमा प्रकाशित आदेश सम्झनुपर्छ ।

#३. **आवश्यक पदार्थको उत्पादन वा वितरण नियन्त्रण गर्ने अधिकार** : (१) कुनै आवश्यक पदार्थको वितरण बढाउन, कायम राख्न वा समान वितरण गराउन वा सुपथ मोलमा प्राप्त गराउन नेपाल सरकारले आवश्यक वा उचित ठहराएमा सूचित आदेशद्वारा त्यस्तो आवश्यक पदार्थको तोकिएको ठाउँमा उत्पादन, वितरण वा व्यापारलाई नियमित वा नियन्त्रण गर्न सक्नेछ ।

(२) उपदफा (१) ले दिएको अधिकारको सर्वसामान्यतामा प्रतिकूल प्रभाव नपारी त्यस्तो आदेशले देहाय बमोजिम गर्न सक्छ :-

(क) कुनै आवश्यक पदार्थको सञ्चय, वितरण, परिवहन, उत्पादन, व्यापार उपभोगलाई अनुमतिपत्र जारी गरी वा अरु किसिमबाट नियमित वा नियन्त्रण गर्न,

# पहिलो संशोधनद्वारा संशोधित ।

(ख) कुनै आवश्यक पदार्थको बिक्री गर्ने वा खरिद गर्ने मोल निर्धारण गर्न वा सूचित आदेशद्वारा तोकिएको अधिकारीको स्वीकृति बेगर कुनै आवश्यक पदार्थको प्रचलित मोलमा बृद्धि गर्न नपाउने गरी नियन्त्रण गर्न,

(ग) सामान्यतः बिक्रीको निमित्त राखेको आवश्यक पदार्थलाई बिक्री गर्दिन भनी अड्डी लिनेलाई सो गर्न नदिन,

(घ) आवश्यक पदार्थ सञ्चय गरी राख्ने व्यक्तिलाई त्यस्तो सञ्चित पदार्थको सम्पूर्ण वा तोकिए बमोजिमको हिस्सा वा भाग नेपाल सरकार वा कुनै अधिकारी वा कुनै व्यक्ति वा वर्गलाई तोकिएको इलाकामा तोकिएको अवस्थामा बिक्री गर्न बाध्य गराउन,

(ङ) सर्वसाधारणको हितको निमित्त आवश्यक देखिएमा कुनै आवश्यक पदार्थ सम्बन्धी व्यापारिक वा आर्थिक कारोवारलाई नियमित वा निषेध गर्न,

(च) माथि उल्लिखित कुनै वा सबै कुरालाई नियमित वा निषेध गर्ने अभिप्रायले समाचार वा तथ्याङ्क सङ्कलन गर्न,

(छ) कुनै आवश्यक पदार्थ सञ्चय गर्ने, वितरण गर्ने वा व्यापार गर्ने व्यक्तिलाई तत्सम्बन्धी अभिलेख (रेकर्ड) र बहिखाताहरु दुरुस्त राख्न र त्यस किसिमका अभिलेख (रेकर्ड) बहिखाताहरु जाँचपडतालको निमित्त पेश गर्न वा तत्सम्बन्धी समाचार विवरण दाखिल गर्न लगाउन,

(ज) कुनै अनुमतिपत्र दिंदा लाग्ने दस्तूर वा त्यस्तो अनुमतिपत्रमा उल्लिखित शर्त बन्देज पालनाको लागि तोकिएबमोजिम धरौटीको रकम दाखिला गराउने र अनुमति पत्रको कुनै शर्त उल्लंघन भएमा धरौटी रहेको रकमको सम्पूर्ण वा केही खण्ड जफत गर्ने र सो प्रयोजनको निमित्त अधिकारी तोक्न,

(झ) कुनै प्रासङ्गिक र पूरक कुराहरुको निमित्त खास गरी गोदाम, गाडी, डुङ्गा, वायुयानभित्र प्रवेश गरी खानतलासी लिने, त्यस्तो खानतलासी लिंदा भेटिएको कुनै वस्तु जसको सम्बन्धमा आदेश उल्लङ्घन भएको वा उल्लङ्घन हुन लागेकोछ भन्ने कुरा सो खानतलासी गर्ने व्यक्तिलाई विश्वास भएमा सो वस्तु जफत गर्न,

(ञ) आदेश उल्लङ्घन गरे वापत सजाय गर्दा जफत गरिने पदार्थ तोक्न, र

(ट) यस दफासंग सम्बन्धित आवश्यक अन्य कुरा।

[#]४. **<u>आदेश विरुद्ध कुनै काम गर्नेलाई सजाय</u>** : (१) कसैले दफा ३ अन्तर्गत निकालिएको आदेश विरुद्ध कुनै काम गरेमा निजलाई पाँच वर्षसम्म कैद वा पन्ध्र हजार रुपैयाँसम्म वा कसूरसित सम्बन्धित पदार्थको बिगोमा जुन बढी हुन्छ सोही अङ्कसम्म जरिवाना वा दुवै सजाय हुनेछ ।

तर, दफा ६ को उपदफा (२) को खण्ड (च) र (छ) बमोजिमको आदेशले तोकेको म्यादभित्र सो आदेशमा लेखिएबमोजिम समाचार, तथ्याङ्क अभिलेख (रेकर्ड) वा विवरण सहित आवश्यक पदार्थको परिमाणको लगत वा बहिखाता तयार नराख्ने, पेश नगर्ने वा आदेश भएबमोजिम खबर नगर्ने व्यक्तिलाई एक वर्षभन्दा बढी कैद वा तीन हजार रुपैयाँभन्दा बढी जरिबाना गर्न हुँदैन ।

(२) दफा ३ बमोजिमको आदेशको विरुद्ध गरेको कसूरसित सम्बन्धित पदार्थ सोही दफा अन्तर्गत निकालिएको आदेशमा जफत गरिने भनी तोकिएको भए सो पदार्थ समेत जफत गरिनेछ ।

५. **<u>उद्योग र प्रेरणा बारे</u>** : दफा ३ बमोजिम गरिएको आदेशको उल्लंघन गर्न प्रयत्न गरेमा वा सो गर्न दुरुत्साहन गरेमा सो आदेश उल्लंघन गरेको मानिनेछ ।

६. **<u>झुट्ठा बयान दिएमा सजाय</u>** : कसैले देहायको कसूर गरेमा [#]<u>दश हजार रुपैयाँ जरिवाना</u> वा तीन वर्षसम्म कैद वा दुवै सजाय हुनेछ :-

(क) कसैलाई दफा ३ बमोजिम कुनै कुराको बयान या खबर गर्ने आदेश भएकोमा जानी जानी वा जान्नु पर्ने मनासिब माफिकको कारण भैकन पनि झुट्ठा कुराको बयान, बकपत्र वा खबर दिएमा, वा

(ख) यो आदेश बमोजिम राख्नु पर्ने कुनै वही हिसाबको कागज, खाता, श्रेस्ताका तमसुक, कबुलियत, हिसाब वा अरु कागजात राख्दा झुट्ठा वा फरेब गरेको देखिएमा ।

[+]६क. **<u>संगठित संस्था वा कम्पनीले गरेको कसूरको सजाय</u>** : (१) यस ऐन बमोजिम कसूर गर्ने व्यक्ति कुनै संगठित संस्था वा कम्पनी भएमा सो कसूर भएको कुरा आफूलाई थाहा थिएन वा सो कसूर रोक्न आफूले सकभर प्रयत्न गरेको थियो भन्ने कुरा प्रमाणित गर्न सकेमा बाहेक त्यस्तो कसूरको लागि सम्बन्धित संगठित संस्था वा कम्पनीको काम कारवाई उपर नियन्त्रण राख्ने निर्देशक, मैनेजर, अन्य कुनै अधिकारी वा व्यक्तिलाई सजाय हुनेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि कुनै संगठित संस्था वा कम्पनीले गरेको कसूर त्यस्तो संगठित संस्था वा कम्पनीको निर्देशक, मैनेजर वा अरु कुनै अधिकारीको जानाजान वा लापरवाहीको कारण भएको हो भन्ने प्रमाणित भएमा त्यस्तो निर्देशक, मैनेजर वा अधिकारी पनि यस ऐन बमोजिम सजायको भागी हुनेछ ।

---

# पहिलो संशोधनद्वारा संशोधित ।

\+ पहिलो संशोधनद्वारा थप ।

[#]७. **मुद्दा हेर्ने अधिकारी** : (१) यस ऐन अन्तर्गत सजाय हुने कसूर सम्बन्धी मुद्दाको शुरु कारबाई र किनारा गर्ने अधिकार प्रमुख जिल्ला अधिकारीलाई हुनेछ ।

(२) उपदफा (१) बमोजिम प्रमुख जिल्ला अधिकारीले यस ऐन अन्तर्गतको मुद्दाको कारवाई गर्दा [♦]विशेष अदालत ऐन, २०५९ बमोजिमको कार्यविधि अपनाउने र अधिकार प्रयोग गर्नेछ ।

(३) उपदफा (१) बमोजिम प्रमुख जिल्ला अधिकारीले गरेको निर्णय उपर [?]पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ ।

[+]७क. **नेपाल सरकार वादी हुने** : यस ऐन अन्तर्गत सजाय हुने कसूर सम्बन्धी मुद्दा श्री ५ को सरकार वादी हुनेछ ।

८. **अधिकार दिने** : [#](१) नेपाल सरकारले यस ऐन बमोजिम आफूलाई प्राप्त हुने कुनै वा सबै अधिकार सूचित आदेश जारी गरी कुनै अधिकृतलाई सुम्पन सक्नेछ ।

(२) उपदफा (१) ले दिएको अधिकारको सर्वसामान्यतामा प्रतिकूल प्रभाव नपर्ने गरी त्यस्तो आदेशद्वारा नेपाल सरकारले निम्नलिखित अधिकार दिन सक्छ :-

(क) कुनै घर, क्याम्पा, डुङ्गा, गाडा वा हवाई जहाजको खानतलासी लिने,

(ख) कुनै पदार्थका सम्बन्धमा यस ऐन बर्खिलाप कसूर गरेकोछ भन्ने विश्वास गर्नुपर्ने मनासिब मफिकको कारण छ भन्ने सो अधिकृतले ठहऱ्याएमा निजले सो पदार्थ कब्जा गर्ने र दाखिल गर्ने गराउने,

(ग) कुनै व्यक्तिले यस ऐन बर्खिलाप कसूर गरेकोछ भन्ने विश्वास गर्नु पर्ने मनासिब माफिकको कारण छ भन्ने सो अधिकृतले ठहऱ्याएमा सो व्यक्तिलाई गिरफ्तार गर्ने ।

[✂] ............................................

९. **सद्भावनाले गरेको कामको बचाउ** : दफा ३ अन्तर्गत दिएको आदेश बमोजिम सद्भावनाले गरेको काम वा गर्न आँटेको कामको लागि कुनै व्यक्ति उपर कुनै मुद्दा वा अरु कानूनी कारवाई चलाइने छैन ।

---

# पहिलो संशोधनद्वारा संशोधित ।

♦ विशेष अदालत ऐन, २०५९ द्वारा रुपान्तरित ।

? न्याय प्रहासन ऐन, २०४८ द्वारा संशोधित ।

+ पहिलो संशोधनद्वारा थप ।

✂ पहिलो संशोधनद्वारा प्रतिबन्धात्मक वाक्यांश झिकिएको ।

१०. **जाहेरवालाले कमिशन पाउने** : यस ऐन बमोजिम नेपाल सरकारबाट निकालिएको आदेश बर्खिलाप गरेकोमा उजूर परी दोषी सावित भई अन्तिम ठहर फैसला भएमा बिगो जफत भएकोमा बिगोको र जफत नभएकोमा असूल भएको दण्डको सयकडा २५ पच्चीस जाहेरवालाले कमिशन पाउनेछ ।

११. **प्रचलित नेपाल कानूनसंग बाझिएमा गर्ने** : यस ऐनमा लेखिएको जति कुरा यसै ऐन बमोजिम र यस ऐनमा नलेखिएको कुरा जति प्रचलित नेपाल कानून बमोजिम हुनेछ ।

---

**द्रष्टव्यः**

१. नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर गरिएका शब्दः-
"अफिसर" को सट्टा "अधिकृत"

२. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरूः-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार"।